# जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति के हो ? अहिले के गर्दैछ ? तत्कालै गर्न सकिने कार्य के हुन् ?

**Q: "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" के हो ?**

A: "वैज्ञानिक सत्ययुग" को लक्ष्यसहित स्थापना भएको एक महाअभियान हो "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" । सम्प्रति बृहत्तर कार्यक्षेत्र भएको यो महाअभियान उपयुक्त समयमा निर्वाचनमा भाग लिने एवं निर्वाचनमार्फत् जनअनुमोदन हासिल गरी राज्यसत्ता सञ्चालन गर्ने राजनीतिक संस्था (पार्टी/दल) का रूपमा अगाडि आउनेछ ।
नेपाललाई वर्तमान सङ्कटको सङ्क्रमणबाट मुक्त गराउने, विश्वका विकसित देशहरुको समूहमा पु¥याउने र अन्ततोगत्वा नेपाललाई नयाँ वैश्विक संरचनाको अग्रणी एवं केन्द्र बनाउने "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को उद्देश्य हो ।
विज्ञानको बुद्धि, प्रविधिको प्रगति, धर्मको विवेक एवं सहृदयताको सम्बन्ध "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" का आधारशिला चतुष्टय (अर्थात्, चारवटा मुख्य आधार) हुन् ।
"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले विशिष्ट रूपमा "राज्यराष्ट्र" सिद्धान्तमार्फत् नेपाली राष्ट्रियताको अद्यावधिक व्याख्या गरेर बृहत्तर राष्ट्रिय एकताको सहृदयतावादी राजनीतिक ढाँचा प्रस्तुत गरेको छ ।

"जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को स्थापना डा. निर्मलमणि अधिकारीको सङ्कल्प एवं आह्वानमा भएको हो । करिब दुई दशकसम्म सैद्धान्तिक, वैचारिक, नीतिगत चिन्तनपश्चात् वि.सं. २०७२ मा दशैंको घटस्थापनाका दिनमा वैदिक विधिपूर्वक सङ्कल्प लिई वि.सं. २०७२ मै वसन्तपञ्चमीको दिनमा "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को स्थापनाको घोषणा गरिएको हो ।

**Q: "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले अहिले के गर्दैछ ?**

A: समाजमा, देशमा संसारमा परिवर्तन ल्याउने हो भने सर्वप्रथम त सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, विश्वदृष्टिकोणको सङ्कथन, अभिनिर्माण एवं मूलप्रवाहीकरणमा ध्यान दिनु पर्छ । तसर्थ, "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" ले अहिले उक्त कार्यलाई नै प्राथमिकता दिएको छ । "वैज्ञानिक सत्ययुग" को सिद्धान्त, वाद, मताग्रह, प्रतिमान, विश्वदृष्टिकोणको सङ्कथन एवं अभिनिर्माणको कार्य अविच्छिन्न, अनवरत, निरन्तर अगाडि बढिरहेको छ र यसको क्रमशः मूलप्रवाहीकरण हुँदैछ ।
साथै, का अग्रणी कार्यकर्ताहरु प्रशिक्षित हुने एवं सम्पर्क विस्तार गर्ने कार्यमा दत्तचित्त छन् । यसबीचमा हाम्रो सम्पर्क विस्तारको क्रम निकै अगाडि बढेको छ । कतिपय विभागले प्रारम्भिक कार्य सुरु समेत गरिसकेका छन् ।

**Q: "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" का सदस्यहरूले तत्कालै गर्न सकिने कार्य के के हुन् त ?**

A: (क) हाम्रो अभियान अहिले प्रारम्भिक अवस्थामा भएकाले सर्वप्रथमतः यसका सदस्यहरूले आफ्नो वैचारिक, सैद्धान्तिक, दार्शनिक प्रशिक्षणलाई नै प्राथमिक महत्व दिनु पर्छ । प्रत्यक्ष बैठक, भेला वा अन्य कार्यक्रम समेत राखेर वा अनलाइन माध्यमबाट विभिन्न विषयवस्तुमा आपसी विचार विमर्श गर्न सकिन्छ । जस्तै :

— "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" मा जरो, किलो, मौलिक, रैथाने र शक्ति शब्दका विशिष्ट अर्थहरू के के हुन् ?

— हाम्रो लक्ष्य "वैज्ञानिक सत्ययुग" हो । यसको परिभाषा, व्याख्या, विश्लेषण कसरी गर्ने ?

— हाम्रा आधारशिला चतुष्टय (चारवटा मुख्य आधार) विज्ञान, प्रविधि, धर्म र सहृदयता हुन् । हाम्रा आधारशिला चतुष्टयका आधारमा कसरी नेपालको सर्वाङ्गीण विकास गर्न सकिन्छ भन्नेबारे सूत्र निम्नानुसार छ ः "विज्ञानको बुद्धि प्रविधिको प्रगति । धर्मको विवेक सहृदयताको सम्बन्ध ।। विकास न्याय स्वाधीनता समृद्धिमा नेपालको । सहृदयी तराइ मधेश पहाड र हिमालको ।।" उक्त सूत्रको व्याख्या, विश्लेषण कसरी गर्ने ?

— वैदिक सनातन धर्म (जसलाई हिन्दू संज्ञा पनि दिने गरिएको छ) का साथै बौद्ध, किरात, बोन, जैन आदि जस्ता धर्मबारेको हाम्रो ज्ञान वृद्धि गर्ने । साथै, आफ्ना आफ्ना संस्कारको यथासम्भव आचरण कसरी गर्न सकिएला ?

— धर्म, संस्कृति, परम्परा, संस्कार, शिक्षा, अर्थतन्त्र, राजनीति, विकासका अनेक विषयवस्तुहरू छन्, जसबारे हाम्रा मौलिक चिन्तन रहेका छन् र जसलाई हाम्रा सदस्यहरूले धारणा गर्नु आवश्यक हुन्छ । उदाहरणका लागि "आर्य" शब्दको अर्थ मात्र राम्ररी बुझ्न र बुझाउन सकियो भने हाल नेपाली–नेपालीको बीचमा जात–जाति–जनजाति–आदिवासीको निहुँमा हुने गरेको द्वेष हटाउन सकिन्छ र नेपाली एकताको आधार बलियो बनाउन मद्दत मिल्छ ।

— नेपालमा "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" को आवश्यकता किन परेको हो ? अनि "जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति" जस्तो अन्तर्राष्ट्रिय संस्थाको आवश्यकता किन परेको हो ? यस्ता अभियानबाट नेपाललाई के फाइदा हुन्छ र नेपाली नागरिकलाई एवं नेपालबाट संसारभरिका विभिन्न देशमा पुगेका नेपालीजनका लागि यसको सार्थकता के छ ?

— हालसम्म जो जो "जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति" का सदस्य बनिसकेका छौं, उनीहरूले व्यक्तिगत हैसियतमा र संस्थागत हैसियतमा नेपालको हितका लागि के कस्तो योगदान गर्न सक्ने अवस्था छ ? अनि यस अभियानका सदस्यता नलिएकाहरूलाई पनि नेपाल र नेपाली समुदायको हितका लागि कार्य गर्न हामीले कसरी उत्प्रेरित गर्न सक्छौं ? यी केही उदाहरण हुन् । यस्ता धेरै विषयवस्तुबारे चिन्तन मनन गर्ने चरणबाट गतिविधि सुरु गर्न सकिन्छ ।

हरेक बैठक, भेला वा अन्य कार्यक्रममा उठेका जिज्ञासाहरूको सूची तयार पारियो भने तिनलाई सम्बोधन गर्ने गरी हामी पुस्तक, लेख, प्रवचन तयार पार्न सक्छौं र जिज्ञासाको समाधान हुँदै जानेछ ।

(ख) अहिले हाम्रो पूर्ण समिति बनिसकेको अवस्था होइन, त्यसका लागि प्रारम्भ हो । तसर्थ, सम्पर्क विस्तारको कार्य पनि अहिलेको हाम्रो प्राथमिकता नै हो । हप्तामा कम्तीमा एकजना र सम्भव भए बढी व्यक्तिसम्म हाम्रो वैचारिक, सैद्धान्तिक, दार्शनिक चिन्तन पुर्याउने लक्ष्य राख्न सकिन्छ । साथै, नेपालमा "जरो र किलो नेपालमै भएको मौलिक रैथाने शक्ति" र अन्तर्राष्ट्रियस्तरमा "रुट एण्ड लोकस इन्टरनेसनल मुभ्मेन्ट" (जरो र किलो नेपालमा भएको अन्तर्राष्ट्रिय शक्ति) स्थापित भएको छ भन्ने जानकारी आफ्नो मित्रमण्डली, कुटुम्ब र अन्य

व्यक्तिहरूसमक्ष समेत पुर्याउने कार्य पनि महत्वपूर्ण हो ।

(ग) सामाजिक सञ्जालमार्फत् हाम्रो वैचारिक, सैद्धान्तिक, दार्शनिक चिन्तनको प्रवाहमा योगदान गर्ने ।

(घ) जब हामीसँग जनबल, मनबल, धनबलको हिसाबले वास्तवमै केही शक्ति आर्जन हुनेछ, तब हामी वैचारिक, सैद्धान्तिक, दार्शनिक चिन्तनजस्ता कार्यमा मात्र सीमित नरहेर व्यावहारिक कार्य समेत सुरु गर्न सक्नेछौँ ।